# سيد العالم

تأليف
عتيق الرحمن محمد إدريس خان مكي

المراجعة
محمد إدريس سلفي

بسم الله الرحمن الرحيم



To connect Author: 0501372254

للتواصل مع المؤلف: 0501372254

लेखकसित सम्पर्क गर्ने नं. ०५०१३७२२५४

प्रथम प्रकाशन साल   सन् २०१५ ई. सं.

निःशुल्क वितरणको लागि मात्र

## पुस्तक पाइने ठेगाना -:

इस्लामिक गाइडेन्स सेन्टर कपिलवस्तु नगरपालिका

व.नं. ९ महुवा तौलिहवा कपिलवस्तु (नेपाल)

सम्पर्क नं. ००९७७९८१९४३७७५८

सउदी नं. 00966-0501372254

इस्लामिक गाइडेन्स सेन्टर रबवा अल् रियाज सउदी अरबीया

# प्रस्तावना

बिस्मिल्लाहिर्रहमानिर्रहीम

अलहम्दो लिल्लाहे नहमदोहु व नस्तईनोहु व नस्तगफिरहु व नऊजो बिल्लाहे मिन शोरूरे अनफोसेना व मिन सईयाते आमालेना, मैंयहदेहिल्लाहो फलामोजिल्ला लहु व मैंयुजलिल्हो फला हादिया लहु व अश्हदोअल्लाइलाहा इल्लल्लाहो व अश्हदो अन्ना मोहम्मदन् अब्दहु व रसूलहु । (अम्मा बअ्द)

हरेक प्रकारको प्रशंसा अल्लाहको लागि छ जसले सर्म्पूण ब्रम्हाण्डलाई उत्पन्न गऱ्यो, र अल्लाहको शान्ति अवतरित होस् अन्तिम संदेष्टा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम र उहाँको घर परिवार र साथीहरू माथि र उनी सबैहरू माथि जुन यस इस्लामको प्रचार प्रसार गरे र मुहम्मदको पद्धतिलाई उत्तम मानी उसै माथि हिंडी आफ्नो जीवन व्यतीत गरे ।

प्रस्तुत पुस्तक ( **विश्वको नायक**) जुन तपाईहरूको समक्ष पेशगर्ने सहास गरेको छु यो विश्वको सर्वोत्कृष्ट नायक मुहम्मद सल्लल्लाहो अलैहे

वसल्लमको जीवनी बारे हो, कसैले पनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमको जीवनका सबै साना ठूला घटनाहरू मैले आफ्नो किताबमा उल्लेख गरेछु यस्तो भन्ने आँट गरेको छैन । त म कसरी भन्न सक्छु कि मैले प्रस्तुत किताबमा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको जीवनका सबै साना ठूला घटनाहरू वर्णन गरेछु , तर मैले यो पुस्तक लेख्ने उद्देश्य केवल यो हो कि प्रत्येक व्यक्तिलाई कम्तीमा उहाँको जीवनबारे सामान्य ज्ञान भइहालोस् , मात्र यही उद्देश्यले नै यो पुस्तक त्यार पारेको छु। यसैले गर्दा यसमा केही प्रमुख घटनाहरू मात्र वर्णन गरिएका छन् , र मैले जुन पुस्तकहरूको सहायताले यो किताब त्यार पारेछु निम्न हुन् : अर्रहीकुल मख्तूम, जादुल् मआद, रौजतुल् अनवार, अल बिदाया वन्निहाया, मुहसिने इन्सानियत, रहमतुल् लिल्आलमीन आदि ।

यदि मैले लेखेका कुनै घटना अथवा मितिबारे कुनै किसिमको शंका हुँदाखेरी उपरोक्त पुस्तकहरूबाट पुष्टि गर्नुहोला । र मलाई आशा छ कि यो सानो पुस्तिका तपाईहरूको लागि लाभप्रद सिद्ध हुनेछ , र अल्लाह यसबाट सृष्टिलाई फाईदा पुऱ्याई मलाई आफ्नो दयाको पात्र बनाउन् । अल्लाह सित विन्ती छ कि मेरो यो सानो प्रयासलाई कबूल गरी मेरो र मेरो

घरपरिवारका समस्त सदस्यहरूको मुक्तिको माध्यम बनाउन् (आमीन)

**<u>लेखक</u>**

**अतीकुर्रहमान मुहम्मद इदरीस खान मक्की**

**कपिलवस्तु नगरपालिका वार्ड नं. ९ महुवा तौलिहवा कपिलवस्तु (नेपाल)**

email- atiqkhannp1982@yahoo.com

**सम्पर्क नं. ००९७७९८१९४३७७५८**

**सउदी मो. न. ००९६६५०१३७२२५४**

बिस्मिल्लाहिर्रहमानिर्रहीम

## मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको वंशज

मुहम्मद पुत्र अब्दुल्लाह पुत्र अब्दुल मुत्तलिब पुत्र हाशिम पुत्र अब्दे मनाफ पुत्र कोसई पुत्र किलाब पुत्र मुर्रह पुत्र कअब पुत्र लेवई पुत्र गालिब पुत्र फेहर पुत्र मालिक पुत्र अन्नजर पुत्र किनानह पुत्र खोजैमह पुत्र मुदरेका पुत्र इलयास पुत्र मोजर पुत्र नेजार पुत्र मअद्द पुत्र अदनान, र अदनान इस्माईल पुत्र इब्राहीमका सन्तति मध्येका हुन् ।

मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको आमा **आमिना** वहब की छोरी हुन् जुन केलाबको संतति मध्येका थिए ।

## मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको कबीला (गोत्र)

मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको गोत्रको नाम हो **कुरैश** जुन समस्त अरबी गोत्रहरूमा उत्कृष्ट र आदर्णय थियो, र यस कबीलाका मान्छेहरू त्यस युगका सरदार एवं नायके थिए ।

## मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको जन्म

मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको जन्म हातिको घटना भएको वर्ष भएको थियो । घटना यो थियो कि अब्रहा नामक राजाले ६०००० लडाकुको साथ मक्कामाथि आक्रमण गऱ्यो । र यो उद्देश्यको साथ आक्रमण गऱ्यो कि कअ्बालाई ध्वस्त पारोस्, तर त्यो जब मक्काको सीमा नजिक पुग्यो तब अल्लाहले त्यसमाथि चराहरू द्वारा आफ्नो प्रकोप अवतरित गऱ्यो र त्यो राजा र त्यसको लडाकाहरू ( सैनिकहरू ) कटेको भूसा झै भइहाले ।

यो घटनाको दुई महीना पश्चात बनी हाशिमको महल्लामा जुन मक्काको प्रसिद्ध महल्ला

थियो सोमबारको दिन ९ रबीउल् अव्वल इस्लामी महीना अनुसार, र २१ अप्रैल ५७१ ईस्वी संबत अनुसार मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको जन्म भयो ।

उहाँ सल्लल्लाहो अलैहे वसल्लमको धाई आमाको नाम हो, **शिफा** अमर की पुत्री र अब्दुर्रहमान बिन औफ की आमा । र उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई उहाँको आमा पश्चात सोवैबाले दूध खुवाउनु भयो जुनकि अबू लहब उहाँको काका की दासी थिइन् । अनि अबू लहबले उहाँ सल्लल्लाहो अलैहे वसल्लमको जन्मको खुशीको अवसरमा सोवैबालाई स्वतंत्र गरिदिए ।

र उहाँ सल्लल्लाहो अलैहे वसल्लमको बुवा अब्दुल्लाहको निधन उहाँको जन्म भन्दा अघि नै भइसकेको थियो ।

## मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम कबीला बनी सअदमा

अरबहरूको यो रीति थियो कि जब कुनै शिशुको जन्म हुन्थ्यो तब त्यस शिशुलाई नगरदेखि पर कुनै गाउँमा पठाइदिन्थे ताकि शहरका विरामीहरूबाट त्यो शिशु सुरक्षित रहोस् ।

कथा यो छ कि यो उपरोक्तको चलनले गर्दा केही महिलाहरू शिशु खोज्नुको लागि कबीला बनी सअदबाट जुन कि तायफ शहरको छेउमा स्थित छ मक्का तर्फ आएकी थिइन् । र यी महिलाहरूलाई अरबी भाषामा **मुरज़ीअ:** भनिन्छ अर्थात दूध खुवाउनेवाली महिला र त्यसलाई धाई आमा पनि भन्न सकिन्छ ।

जब उपरोक्त महिलाहरू मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम कहाँ पुगिन् त उहाँलाई टुहुरो भएको कारणले कसैले पनि स्वीकार गरेनन् तर **हलीमा** अबू जोऐब की छोरीले कुनै आर्को शिशु न मिलेको कारणले मुहम्मदलाई स्वीकार गरिन् ।

तर हलीमालाई के थाहा थियो कि जस शिशुलाई कसै महिलाले मनपराएनन् त्यो कति भाग्यशाली छ र त्यही बच्चा भविष्यमा अल्लाहको

सबै भन्दा महान संदेष्टा हुनेछ । अर्थात उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई आफ्नो गोद ( काँखा )मा लिने बित्तिकै उहाँ सल्लल्लाहो अलैहे वसल्लमको प्रतापले बरकतको अवतरणको प्रारम्भ भयो, हलीमाको बखान छ कि मेरो छाती ( वक्ष, स्तन ) दूधबाट वंचित थिए, र मेरो छोरो भोकले रुदै रहन्थ्यो, तर मुहम्मदलाई गोद लिने बित्तिकै मेरो स्तन दूधले पूर्ण भरिहाल्यो र दुवै शिशुले पेटभरी दूध खाई निद्राए ।

र हलीमाको नै कथन छ कि मेरो जुन ऊँटनी थियो त्यो अति दुर्बल र पात्लो थियो, मक्का आउँदाखेरी सबै भन्दा पछाडी थियो, तर मुहम्मदलाई लिएर जाँदाखेरी त्यही दुब्लो पात्लो ऊँटनीले सबैलाई पछाडी छाडी दियो, यो मात्र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको बरकत नै थियो ।

र हलीमाको वर्णन छ कि जब हामी मक्काबाट फर्केर आफ्नो घर कबीला सअदमा पुगेँ, र त्यो अन्नकालको समय थियो, कता पनि हरियो घाँस देखिन्न थियो, तर मेरो ऊँटनी र बाखाहरू

पेटभरी घाँस चरेर आउँथे र हामी बाख्राको दूध दुहेर खान्थें, जब कि कुनै पनि मान्छे दूधको एउटा पनि थोपा ( कतरा ) देख्दैन थियो ।

दूध खुवाउने अवधि समाप्त भए पश्चात पनि लगभग दुई वा ढाई वर्ष सम्म मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम कबीला बनी सअदमा व्यतीत गर्नु भयो । अनि " शक्के सदर " सीना च्यात्ने घटना घटित भयो, त्यसै कारण हलीमाले उहाँलाई उहाँको आमालाई सुम्पि हालिन् । कुरो यो थियो कि एक दिन मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम केही केटाहरूको साथ खेली राखेका थिए, त्यसै बखत हजरत जिब्रील उहाँ समक्ष प्रकट भएर उहाँको सीनालाई च्याती जमजमको पानीले स्वच्छ पारे र उहाँको सीना भित्रबाट एउटा " अलका" भ्रुण जस्तो मासुको टुक्रा निकालेर फालिदिए, अनि भने यो शैतानको अंश थियो, फेरि सीनालाई पहिला जस्तै गराइहाले । यो दृश्य हेरेर बच्चाहरू चिचाउँदै हलीमा समक्ष पुगेर भन्न थाले मुहम्मदको त हत्या गरियो, अनि हलीमा दगुर्दै उहाँ समक्ष आइन् त हेरछिन् कि उहाँको अनुहारको रङ्ग

परिवर्तित भएको छ अनि उनको ज्यान जाने भयले गर्दा उहाँलाई उहँको आमालाई सुम्पि हालिन् ।

तर उहाँ सल्लल्लाहो अलैहे वसल्लमको मात्र ६ वर्षको उमेरमा उहाँको आमाको पनि मक्का र मदीनाको बीचमा स्थित अबवा नामक स्थानमा निधन भयो । र त्यहीँ उहाँ सल्लल्लाहो अलैहे वसल्लमको आमा आमिनालाई दफ्नाइयो र उहाँको चिहान आज पनि अबवा नामक स्थानमा हेर्न सकिन्छ ।

आमाको निधन पश्चात उहाँको बाजे अब्दुल मुत्तलिब उहाँको हेरचाह गर्नु भयो, र उहाँको बाजे उहाँसित अति प्रेम गर्नु हुन्थ्यो, र उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई आफ्नो ओछ्यानमा सुताउनु हुन्थ्यो । तर दुई वर्ष पछि जब उहाँ सल्लल्लाहो अलैहे वसल्लमको उमेर ८ वर्षको थियो उहाँको बाजेको पनि निधन भयो । अनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमको काका अबू तालिबले उहाँ सल्लल्लाहो अलैहे वसल्लमको देखरेख गर्ने निर्णय गरे ।

# शाम ( रोम )को यात्रा

मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको काका अबू तालिब कुरैशको एउटा व्यापारी समूहको साथ व्यवसायको इच्छाले शामतिर यात्रागर्ने मन बनाए, र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई पनि साथ लिए त्यस बखत उहाँ सल्लल्लाहो अलैहे वसल्लमको उमेर १२ वर्ष थियो। अनि यो व्यवसायी समूह रोमको बुस्रा शहरको छेउमा जुन रोमको नजिक थियो र जसमाथि रोमको अधिपत्य कायम थियो त्यहाँ बास गर्ने इच्छाले रुके, र यात्राको थकाई उतार्नुको निम्ति विश्राम गर्नथाले। अनि एउटा अनोठो घटना घटित भयो त्यो घटना हो **बुहैरह** राहिबको। कुरो यो थियो कि बुहैरह नामक ईसाईहरूको एउटा धर्मगुरु मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम समक्ष आई उहाँको हात समाती भन्यो “ यो समस्त संसारको सरदार र नायक हो, यो समस्त संसारको पालनकर्ता द्वारा पठाईएको संदेष्टा हो, यो समस्तम

संदेष्टाहरूको सरदार हो ” अनि उहाँको काका र कुरैशका नायकेहरुले सोध्नु भयो तिमीलाई यो कुरो कसरी थाहा भयो ? बुहैरहले भन्यो : कि जब तिमीहरू अकबा नामक स्थानबाट अगाडि बढयौ तब समस्त ढुङ्गा एवं रुखहरूले ढोगगरे र यी समस्त वस्तुहरू नबी बाहेक कसै मनुष्यलाई ढोग्दैनन् । र दोस्रो प्रमाण उहाँको काँधा ( पिठयुँको माथिल्लो भाग)मा स्याऊ जस्तो नुबूवतको मुहर लागेको छ , र यो हाम्रो किताबमा उल्लेख छ ।

फेरि त्यस बुहैरहले उनीहरूको आदर सत्कार गऱ्यो र उहाँको काकासित अनुरोध गऱ्यो कि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई मक्का फिर्ता गरिदिउन् र उहाँलाई लिएर रोम नजाउन् किनकी यदि यहूदीहरूलाई थाहा भयो भने यहूदीहरू मुहम्मदलाई हानि पुऱ्याउन सक्छन् । अनि यो कुरा सुनी उहाँको काकाले उहाँलाई मक्का फिर्ता गरिदिए ।

र यस्तै मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको २० वर्षको उमेरमा फेजार नामक ठूलो युद्ध भयो, जुन युद्ध कुरैश, केनाना,कैस र अैलान

बीच भएको थियो, र रसूल सल्लल्लाहो अलैहे वसल्लम यस युद्धमा उपस्थित थिए र आफना काकाहरूको लागि तीर (वाँण) त्यार पार्थे ।

र यस युद्धविराम पश्चात फुजूल नामक अटोट ( हल्फ ) प्रतिज्ञा कुरैशका ५ समूह बीच गरियो, यस अटोटको उद्देश्य थियो कि मक्का भित्र कुनै मान्छे माथि अत्याचार एवं अन्याय न गरियोस्, यदि कसैले अन्याय गऱ्यो भने यी ५ समूह अन्याय गर्ने मानछेलाई दण्डित गर्ने प्रतिबद्ध छन् । यस अटोटबारे रसूल सल्लल्लाहो अलैहे वसल्लम संदेष्टा बनाईए पश्चात भन्थे यदि मलाई यसतै प्रतिज्ञा एवं प्रतिबद्धता तर्फ आमंत्रित गरिन्थ्यो भने म त्यसलाई अवश्य स्वीकार्ने थिएँ ।

## आर्थिक सुधारका लागि उहाँले गरेका केही मुख्य कार्यहरू

हामीलाई यो थाहा भइसकेको छ कि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको माता पिता

तथा बाजेको निधन उहाँको बाल्यकाल मै भइसकेको थियो, र उहाँ सल्लल्लाहो अलैहे वसल्लम आफ्नो काका अबू तालिबको छत्रछायामा जीवन व्यतीत गर्ने बाध्य भइसकेका थिए । र उहाँको आर्थिक अवस्था राम्रो थिएन, यसै कारण उहाँ सल्लल्लाहो अलैहे वसल्लमले बाखा चराउनु भयो, र व्यवसाय पनि गर्नु भयो, र यसै विषयमा हजरत खदीजा रजिअल्लाहो अन्हाको लागि व्यवसाय गर्नुको निम्ति शामतिर यात्रा पनि गर्नु भयो, अनि उहाँको ईमान्दारी र सत्यताबाट प्रभावित भई हजरत खदीजाले उहाँसित विवाह गर्ने इच्छा प्रकट गरिन्, अनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमको २५ वर्षको उमेरमा हजरत खदीजासंग विवाह भयो, र त्यस समय हजरत खदीजाको उमेर ४० वर्ष थियो, र उनी विधवा पनि थिइन् । उनको पहिलाको दुई लोग्नेहरू एक पछि आर्को मरिसकेका थिए, हजरत खदीजाको पहिलो लोग्ने अतीक बिन आइज थिए उनको मृत्यु पश्चात हजरत खदीजाले अबू हालहसित विवाह गरिन्, अनि उनको पनि निधन भयो । त्यस पश्चात कुरैशका ठूला ठूला

सरदारहरूले उनीसित विवाह गर्ने इच्छा प्रकट गरे तर हजरत खदीजाले अस्वीकार गरिन् अनि अन्तमा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई उहाँको स्वच्छ एवं पवित्र आचरणको कारण मनपराइन् अनि यो विवाह भयो । रसूल सल्लल्लाहो अलैहे वसल्लमको सबै संतान हब्राहीम बाहेक खदीजाबाट नै जन्मे । र हजरत खदीजा अति समृद्ध युवती थिइन्, र राम्रो वंशज की थिइन्, यो विवाहले गर्दा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको जीवनमा पहिलो पटक खुशियालीको सुअवसर आयो, र उहाँ हँसीखुशी जीवन व्यतीत गर्नथाले ।

# कअ्बाको पुनः निर्माण

उहाँ सल्लल्लाहो अलैहे वसल्लमको ३५ वर्षको उमेरमा एउटा ठूलो बाढी आएको कारणले कअ्बाका केही भागलाई ठूलो हानि पुगेको थियो,र यसै कारण कअ्बा भत्कने अवस्थामा आई पुगेको थियो । यसै कारण कुरैशले कअ्बालाई पुनः निर्माण गर्ने निर्णय गरे । र निर्माण गर्ने क्रममा जब हज्रे अस्वद ( कालो ढुङ्गा )लाई स्थापित गर्ने समय आयो त सबै नायकेहरू बीच विवाद उत्पन्न भयो, सबै सरदारहरू त्यसलाई आफ्नो हातले स्थापित गर्ने इच्छा प्रकट गरे । अनि एउटाले भन्यो यसोगरौ जुन यस मस्जिदमा पहिलो व्यक्ति प्रवेश गर्छ त्यसैलाई हामी आफ्नो यस विवादको न्यायकर्ता बनाऔं ऊ जे भन्छ सबैलाई मान्नु पर्छ, अनि सबैले टाउको हल्लएर समर्थन गरे । अनि सबैले हेरे कि मस्जिदमा प्रवेशगर्ने पहिलो व्यक्ति मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम हुन्, अनि यो हेर्ने वित्तिकै सबै एउटै स्वरमा भन्न थाले अमीन आयो अमीन आयो हामी यसको निर्णयलाई अवश्य मान्ने छौं । अनि सबैले उहाँ सल्लल्लाहो अलैहे वसल्लम

समक्ष आफ्नो समस्या राखे, अनि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमले एउटा चादर ल्याउने आदेश गरे तत पश्चात त्यो चादरमाथि हज्रे अस्वद राखेर भने अब सबैजना चादरको किनारालाई समातेर कअ्बा सम्म पुऱ्याऊ अनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमले आफ्नै हातबाट त्यसलाई कअ्बाको परखालमा स्थापित गरे, र यस्तो चतुराईले उहाँले उनीहरूको समस्याको समाधान गरे र आइपरेको युद्धलाई रोकी रक्तपातबाट सबैलाई सुरक्षित गरे ।

## नबूवत (दूतत्व)को आरम्भ

मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम सत्यनिष्ठ र राम्रो आचरणको मान्छे थिए, नि:सहाय, विधवा, गरीब आदिको सहायता गर्थे, र सत्यलाई मनपराउँथे । यसै कारण उहाँ बाल्यकाल देखी नै मूर्ति पूजालाई मन पराउँदैनथे, र आफ्नो पूज्यको पूजा इब्राहीमको धर्म अनुसार गर्थे । र **हिरा** नामक

गूफामा गई आफ्नो पूज्य अल्लाहको पूजा गर्थे विशेष गरी रमजानको महीनामा ।

अनि जब उहाँको उमेर ४० वर्ष पुग्यो तब नबूवत ( दूतत्व )को आरम्भ साँचो स्वप्नद्वारा भयो, उहाँ सपनामा जे पनि हेर्थे बिहान त्यो सत्य भई जान्थ्यो, र उहाँलाई मक्काका ढुङ्गाहरू सलाम ( नमस्कार ) गर्थे । अनि जब रमजानको महीना आयो तब उहाँले अल्लाहको अराधना गर्ने क्रमलाई निरंत्रता दिदै गारे हिरा पुगे र अल्लाहको पूजा गर्न थाले । अनि सोमबारको दिन २९ रमजान ईस्वी संबत अनुसार १० अगास्त ६१० ई.मा उहाँमाथि पहिलो पटक वह्य ( अल्लाहको प्रकाशना ) अवतरित भयो । हजरत जिब्रील कुरआनको पाँचवटा आयत (श्लोक) लिएर आए र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम सित भने पढ, उहाँले भन्नु भयो मलाई पढ्न आउँदैन , यस्तै तीन चोटि हजरत जिब्रीलले उहाँसित पढने आग्रह गरे अनि भने इक्रा बिस्मे रब्बिकल् लजी खलक......। आर्थात सूरतुल् अलकका पाँचवटा आयतहरू उहाँलाई पढाए, उहाँ यस घटनाबाट भयभीत भएर

मक्का फर्केर आए र खदीजासित भने मलाई चादर ओढाई देऊ, ममाथि पानी हाल, र हजरत खदीजासित सम्पूर्ण कथा वर्णन गरे । अनि हजरत खदीजा आफ्नो काकाको छोरा वरका बिन नौफल कहाँ गइन् र पूर्ण घटना वर्णन गरिन् अनि वरका बिन नौफलले भने : यो त त्यही फरिश्ता हो जुन मूसामाथि अवतरित हुन्थ्यो । र वरका बिन नौफलले यो भविष्यवांणी पनि गर्नु भयो कि तिम्रो कौमले ( जातिले ) तिमीलाई देश निकाला अवश्य गर्ने छन् , र यदि म त्यस समय जीवित रहें भने म तिम्रो बलपूर्वक सहायता गर्नेछु ।

उपरोक्तमा वर्णन गरिएका ५ आयतहरू द्वारा मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई नबी बनाइयो । र यो घटनाको केही दिन पछि उहाँ सल्लल्लाहो अलैहे वसल्लम माथि सूरतुल् मुद्दस्सिर अवतरित गरियो, र यो सूरतद्वारा उहाँलाई रसूल बनाइयो । र उहाँलाई अल्लाह द्वारा यो आदेश गरियो कि सबैलाई एक अल्लाहको पूजा तर्फ आव्हान गरुन् र स्वयम् पनि एकेश्वरवादमा सुदृढ

रहुन् , र आफ्नो हृदय एवं लुगालाई स्वच्छ पारुन् ।

अनि उहाँले दअ्वत ( प्रचार प्रसार )को आरम्भ गर्नु भयो र आफ्नो निकटतम् साथि आफन्तीहरूलाई इस्लाम तर्फ बोलाउनु भयो, अनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई सफलता पनि मिल्यो ।

## सर्वप्रथम इस्लाम ल्याउने केही भाग्यवान व्यक्तिहरू

महिलाहरूमा सर्वप्रथम ईमान ल्याउने युवती हुन् “ हजरत खदीजा” रजिअल्लाहो अन्हा, उहाँको प्रिय स्वास्नी । र पुरुषहरूमा सर्वप्रथम आस्थावान हुने व्यक्ति हुन् “ हजरत अबू बक्र ” रजिअल्लाहो अन्हो, उहाँको घनिष्ट मित्र । र बालकहरूमा सर्वप्रथम ईमान ल्याउने बालक हुन् “ हजरत अली ” रजिअल्लाहो अन्हो । र दासहरूमा

सर्वप्रथम ईमान ल्याउने मध्ये हुन् " हजरत जैद बिन हारसा" रजिअल्लाहो अन्हो ।

यी चारजना पहिलो दिन नै इस्लाम कबूल गरे र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई अल्लहको रसूल स्वीकारे । अनि यी सबैले मिलेर इस्लामको प्रचार गर्नथाले फलस्वरूप धेरै जनाले इस्लाम स्वीकार गरे, जस मध्ये केही निम्न हुन् :

अबू उबैदह, उस्मान बिन अफ्फान, अब्दुर्रहमान बिन औफ, उम्मे अैमन, सअद बिन अबी वक्कास, अब्दुल्लाह बिन जहश, आदिले इस्लाम कबूल गरे । अर्थात लगभग १३० जनाले सर्वप्रथम इस्लाम कबूल गरे । र यस्तै तीन वर्ष लुकिछुपी दअ्वतको कार्य हुँदैरह्यो । र यसै बीच मुसलमानहरू मथि दुई बखतको नमाज अनिवार्य गरियो, एउटा सूर्यउदय भन्दा अघि र आर्को सूर्यअस्त भन्दा अघि, र यो नमाज मुस्लिमहरू लुकिछुपी पढदै गर्थे ।

## दअ्वतको दोस्रो क्रम

तीन वर्ष लुकेर दअ्वत (आह्वान) गरे पछि अल्लाहद्वारा आदेश गरियो कि अब दअ्वतलाई सबैको सामुन्ने प्रकट गर र जाहेरी दअ्वतको प्रारम्भ गर ।

अल्लाहको यो आदेश पश्चात रसूल सल्लल्लाहो अलैहे वसल्लमले आफ्ना आफन्तहरूलाई जम्मा गरी इस्लाम तर्फ बोलाउनु भयो, फलस्वरूप सबै जना कोमलताको साथ कुरा गरे तर उहाँको काका अबू लहबले भन्योः मुहम्मदलाई समातिहाल, रोकिहाल, त्यो समय भन्दा पहिला कि समस्त अरबीहरू यसको धर्मलाई स्वीकारी हालुन् । र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई हानि पुऱ्याउने पनि चेतावनी दियो, अनि उहाँको आर्को काका अबू तालिबले भने : हे मेरो भाइको छोरो तिमीलाई जे मन लाग्छ गर जसले पनि तिमीलाई हानि पुऱ्याउने दुसहास गर्छ त्यसलाई म रोकी हाल्छु , जब सम्म मेरो ज्यान छ तिमीलाई कुनै मान्छे हानि पुऱ्याउन सक्दैन । यसर्थ रसूल सल्लल्लाहो अलैहे वसल्लमले जब आफ्नो काका अबू तालिबको यो कुरा सुने र उहाँलाई

आफ्नो सहायकको रूपमा पाए त रसूल सल्लल्लाहो अलैहे वसल्लमको सहास अझै दोब्बर भई गयो, र एक दिन सफा नामक पहाड ( पर्वत ) माथि चढेर सबैलाई ठूलो स्वरमा आव्हान गरे । अनि जब सबैजना भेलाभए त भने हे मेरो कौम यदि म तिमीहरूलाई यो समाचार सुनाऊँ कि यस पहाड पछाडि एउटा ठूलो सेना आई पुगेछ र तिमीहरू माथि आक्रमण गर्ने त्यारीमा छ त के तिमीहरू मेरो यो कुरोलाई पत्तयाउने छौ ? विश्वास गर्ने छौ ? उनीहरूले भने हामी अवश्य विश्वास गर्ने छौं तत पश्चात रसूल सल्लल्लाहो अलैहे वसल्लमले भने हे मेरो जातिबन्धु ! म तिमीहरूलाई अल्लाहको कष्टदायक प्रकोपबाट ( सजायबाट ) सावधान गर्छु । र उहाँले सबैलाई एकेश्वरवाद तिर आमंत्रित गरे, र लाइलाहा इल्लल्लाह मुहम्मदुर्रसूलुल्लाह माथि विश्वास एवं आस्था राख्ने आग्रह गरे, यो सुनेर भेला भएका मान्छेहरू यताउता भइहाले तर अबू लहबले भन्यो ! हे मुहम्मद तिम्रो लागि विनाश होस् के तिमीले यसै कारण हामीहरूलाई भेला गरेका थियौ ? यसैको

जवाफमा अल्लाहले सूर: अल्लहब अवतरित गऱ्यो । र अल्लाहले यसै सूर:द्वारा यो भविष्यवाणी गऱ्यो कि निकट भविष्यमा अबू लहबको विनाश हुनेछ, र यस्तै भयो ।

र यस्तै उहाँ सल्लल्लाहो अलैहे वसल्लमले इस्लामीय प्रचार प्रसारलाई निरंत्रताको साथ गर्दैरहे , र एक दुई गरी अरु मान्छेहरू इस्लामलाई कबूल गर्दैगए । यसै बीच हज्जको महीना आई पुग्यो त अनास्थावानहरू चिन्तित भए, र भने यदि हाजीहरूले यसको कुरा सुन्छन् भने अवश्य विश्वास गरिहाल्छन्, हामीहरूलाई अब के गर्नु पऱ्यो ? अनि सबै मिलेर परामर्श गरे पश्चात यो निष्कर्षमा पुगे कि मुहम्मदलाई जादूगर भनौं र उसको कुरालाई जादू भनौं, र यसै कुरामा सबैको सहमति भयो । अर्थात अनास्थावानहरूले इस्लामको प्रचारलाई रोक्नुको निम्ति विभिन्न प्रकारका हत्कण्डाहरू र विकल्पहरू अपनाए, तर इस्लामको लोकप्रियता बढदै गयो, र इस्लामको प्रकाश हाजीहरूको साथ विश्वका विभिन्न ठाउँहरूमा पनि पुग्यो ।

यो हेरेर काफिरहरू क्रोधले व्याकुल भई उन्मादी झैं भए । अनि आस्थावानहरू मथि अत्याचार गर्नथाले, र अत्याचार पनि यस्तो जस्तो न कसै कानले सुनेको थियो नत कुनै आँखाले हेरेको थियो। अर्थात कतिपय मुस्लिमहरू माथि त यस्तो अत्याचार गरियो कि उनीहरू मुर्क्षित भइजान्थे, जस्तो कि बिलाल, आमिर बिन फुहैरह, खबाब बिन अरत, र अम्मार बिन यासिर र उनको बुवा आमाको अवस्था थियो । र अम्मार बिन यासिर कि आमामाथि त यस्तो अत्याचार गरियो कि उहाँको मृत्यु भयो, र उहाँ इस्लामकी प्रथम शहीदको उच्च दर्जामा विराजमान भइन्। र स्वर्ग पाउनुको सुसमाचार रसूल सल्लल्लाहो अलैहे वसल्लमको मुखले यसै संसारमा नै पाइन्। र यस्तै धेरै आस्थावानहरू छन् जुनमाथि मात्र इस्लाम स्वीकार गर्नुको कारण क्रुर्ताको साथ असहनीय कष्टदायक अत्याचार गरियो ।

र मात्र रसूल सल्लल्लाहो अलैहे वसल्लमका साथीहरू माथि अत्याचार गरिएन बरु मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम माथि पनि काफिरहरू

द्वारा कष्ट पुर्‍याइने दुसहास गरियो । र जुन मान्छेहरूले मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई कष्ट पुर्‍याए ती मध्ये केहीका नाम निम्न हुन् :

अबू लहब, अबू लहबकी स्वास्नी, अबू जहल, वलीद बिन मुगीरा, असवद बिन अब्दे यगूस, अबू जमअह, हारिस बिन कैस, आस बिन वायल, आदि ... ।

रसूल सल्लल्लाहो अलैहे वसल्लमले **दारुल अरकम** अरकम सहाबीको घरलाई दअ्‍वत र पूजा गर्ने केन्द्र निर्धारित गरेका थिए, त्यहाँ भेला भएर रसूल सल्लल्लाहो अलैहे वसल्लम सबैलाई इस्लामका निर्देशनहरू सिकाउँथे र आफ्नो साथीहरूको अवस्थाहरूबारे परामर्श गर्थे । र जब रसूल सल्लल्लाहो अलैहे वसल्लमले काफिरहरूको अत्याचार उहाँको साथीहरू माथि दोब्बर हुँदै गएको हेरे त आफ्ना साथीहरूलाई प्रवास ( हिजरत) गर्ने आदेश दिए ।

## हब्शा तर्फ पहिलो प्रवास

इस्लामी महीना रजबको ५ तारिखको दिन मुस्लिमहरूको पहिलो समूहले प्रवास गऱ्यो, जस मध्ये १२ पुरुष र ४ महिलाहरू थिए। र सबैको सरदार हजरत उस्मान बिन अफ्फान थिए। र जब यो समाचार काफिरहरूलाई पुग्यो त उनीहरू क्रोधले आगो भइहाले र बाँकी बचेका आस्थावानहरू माथि अरु तिब्रताको साथ अत्याचार गर्नथाले।

यसै बिच एउटा प्रसिद्ध घटना घटित भयो जसले हिजरत गरेका मुस्लिमहरूलाई मक्का फर्कने बाध्य गऱ्यो। कुरो यो थियो कि रसूल सल्लल्लाहो अलैहे वसल्लमले ठूलो स्वरमा मस्जिदे हराममा सूरतुन् नजमको पाठ (तिलावत) गर्दैहुनु हुन्थ्यो अनि ढोग ( सजिदा)को आयत आउँदाखेरी रसूल सल्लल्लाहो अलैहे वसल्लमको साथ साथै काफिरहरूले न चाहँदा पनि ढोगीहाले। जब यो समाचार प्रवासीहरूलाई हब्शामा थाहा भयो त उनीहरूले बूझ्के कि कदाचित कुरैशका समस्त मान्छेहरू आस्थावान भई हाले। अनि उनीहरू हब्शाबाट मक्का फर्केर आए, अनि जब मक्कामा

पुगे त हेरे कि हब्शामा सुने जस्तो केही पनि छैन बरु कुरो बेगलै छ । कुरैशका मान्छेहरू त अनास्थावान नै छन् र उनीहरूको अत्याचारमा त झन् वृद्धि भइसकेको छ । त फेरि उनीहरू प्रवासगर्ने निर्णय गरे ।

## हब्शा तर्फ दोस्रो प्रवास

काफिरहरू रसूल सल्लल्लाहो अलैहे वसल्लमको साथ ढोगेमा लज्जित भएर उहाँका साथीहरू मथि अधिक्तम् अत्याचार गर्नथाले त रसूल सल्लल्लाहो अलैहे वसल्लमले आफ्ना साथीहरूलाई फेरि हब्शा तर्फ प्रवासगर्ने संकेत गरे । अनि दोस्रो पटक मुसलमानहरू हब्शा तर्फ प्रवास गरे । र यस पटक प्रवासीहरूको संख्या पहिला भन्दा अधिक थियो, ती मध्ये ८३ पुरुष र १८ महिलाहरू थिए ।

दोस्रो प्रवासको समाचार जब काफिरहरूलाई पुग्यो त उनीहरू अति चिंतित भए, र आफ्ना केही मान्छेहरूलाई हब्शाको राजा

नजाशी समक्ष विभिन्न प्रकारका उपहारहरू सहीत पठाए । र भने नजाशीसित कुरा गरेर यी आस्थावानहरूलाई फिर्ता लिएर आउनु । अर्थात काफिरहरूले पठाएका दूतहरू नजाशीको दरबारमा पुगी मुस्लिमहरूको बारेमा कुरा गरे, र भने यिनीहरू अधर्मी भइसकेका छन् यिनीहरूलाई हाम्रो साथमा पठाइदिनुस् । तर नजाशी सत्यनिष्ठ मान्छे थियो, त्यसले मनमा विचार गऱ्यो कि उत्तम त यो होला कि विरोधीहरूको कुरा पनि एक पटक सुनौं । अनि मुसलमानहरूलाई डाँक्न आफ्ना मान्छेहरू पठायो । र मुस्लिमहरू दरबारमा उपस्थित भए पश्चात सोध्यो कि हे प्रवासी समूह तिमीहरूले आफ्ना जातिबन्धुहरूको धर्मलाई त्याग्यौ ? र विगतका कुनै धर्मलाई न स्वीकारी एउटा नौलो धर्मलाई स्वीकार्यौ तिमीले यसतो किन गऱ्यौ ?

मुसलमानहरूको तर्फबाट प्रवक्ताको रूपमा हजरत जअ्फर रजिअल्लाहो अन्हो उभ्नु भयो र भन्नु भयो : हे महराज ! हामी अनभिज्ञ कौम थिएँ, मूर्ति पूजन् गर्थें, मृतकलाई खाने गर्थें, निर्लज्जताका कार्यहरू गर्थें, रिश्ता नातालाई विच्छेद गर्थें, र छिमेकीहरू

सित दुर्व्यवहार गर्थौं, र हामी मध्येका शक्तिशालीहरू दुर्वलको हक खाई दिन्थे, र हामी उपरोक्त वर्णन गरिएका अवस्थामा अआफ्ना जीवन व्यतीत गरिरहेको अवस्थामा हामी मध्येकै हाम्रो माझमा अल्लाहले एउटा संदेष्टा पठायो, जसको वंशलाई हामी राम्री जान्दथ्यौं, र त्यसको सत्यता, धरोहरता, पवित्रतालाई जान्दथ्यौं र मान्दथ्यौं । अनि त्यस संदेष्टाले हामीलाई एकेश्वरवाद तर्फ आमन्त्रित गऱ्यो, र केवल एक ईश्वरको उपासना गर्ने आव्हान गऱ्यो, र मूर्ति पूजाबाट मनाही गऱ्यो । र हामीलाई सत्यताको आदेश दियो र ईमान्दारी, आफन्तीसित राम्रो व्यवहार गर्ने, र छिमेकीहरूसंग सुव्यवहार गर्ने आदेश गऱ्यो । र निर्लज्जता एवं व्यभिचार र अनुचित कार्यहरू र रक्तपातबाट रोक्यो । र झूठ बोल्नुबाट, टुहुरो र अनाथको सम्पत्तिलाई अनाहक खानुबाट, र पवित्र महिलाहरू माथि दोषारोपण गर्नुबाट मनाही गऱ्यो । र हामीलाई हुकुम गऱ्यो कि हामी अल्लाहको पूजा अराधनामा कसैलाई साझीदार न बनाऔं । र हामीलाई नमाज कायम गर्ने, दान दिने, ब्रत बस्ने, .... आदिको हुकुम गऱ्यो

। अनि हामीले त्यस नबीमा विश्वास गरी त्यसको अनुशरण गर्‍यौं, र त्यो सबै गर्न थाल्यौं जुन अल्लाहले त्यो संदेष्टाद्वारा हामीलाई गर्ने आदेश दिएको थियो, र त्यो सबै कर्मलाई त्यागिदियौं जुन कार्यहरूबाट अल्लाहले हामीलाई रोकेको थियो । यसै कारण हाम्रा जातिका नायकेहरू र मान्छेहरू हामीमाथि अत्याचार गरे र हामीमाथि खालखालका कष्टदायक क्रुर्तापूर्ण दुर्व्यवहार र दुराचार गरे, र हामीलाई फेरि त्यसै कुकर्मतर्फ फर्काउन खोजे, जब उनीहरूको अत्याचार आफ्नो चर्मसीमालाई पार गर्‍यो तब हामीले प्रवासगर्ने निर्णय गरें, र सबै राज्यहरूलाई छाडी हजुरको राज्य तर्फ प्रस्थान गरें । र हजुरको राज्य तर्फ प्रवास गर्ने कारण यो हो कि हामीहरूलाई यो आशा थियो कि हजुरको राज्यमा हामीमाथि कुनै प्रकारको अत्याचार गरिने छैन र कुनै व्यक्ति अत्याचार गर्ने दुसहास गर्नसक्दैन ।

यो कुरा सुने पश्चात राजा नजाशीले हजरत जअ्फर रजिअल्लाहो अन्होसित कुरआनबाट केही सुनाउने अनुरोध गर्‍यो । अनि हजरत

जअ्फरले सूरतुल् मरियमको प्रारम्भका केही आयतहरू पढेर सुनाए। कुरआनका आयतहरु सुनेर शाह नजाशी र उसको दरबारीहरूको दाह्री आँसुबाट भिजियो, र नजाशीले भन्यो : यो (कुरआन ) र जुन ईसा अलैहिस्सलाम लिएर आएका थिए ( इन्जील ) एउटै खोपाबाट निस्केका छन्।

फेरि नजाशीले काफिरहरूका दूतहरूसित भन्यो तिमीहरू फर्की हाल म कदापि यिनीहरूलाई तिमीहरूको अधिनस्थ गर्दैन। र दोस्रो दिन अर्थात प्रात:काल काफिरहरू मुसलमानहरूको लागि एउटा चाल पनि चले तर उनीहरूको षडयन्त्र उनीहरू माथि नै आइपुग्यो र उनीहरू निराश भई मक्का फर्के।

यो निराशा पश्चात काफिरहरूले मुसलमानहरू मथि अरु तिब्रताको साथ अत्याचार गर्नथाले , र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम माथि पनि उतैबा बिन अबी लहबले प्रहार गऱ्यो र उहाँ सल्लल्लाहो अलैहे वसल्लमको कमीजलाई च्यात्यो र उहाँ सल्लल्लाहो अलैहे वसल्लमको अनुहारमा थुकने दुसहास गऱ्यो। र यस्तै अबू

जहलले पनि उहाँको हत्या गर्ने प्रयास गऱ्यो, तर सफल भएन । र यस्तै उक्बा बिन अबी मोईतले पनि उहाँलाई मार्ने प्रयास गऱ्यो तर असफल भयो ।

तर यसै बीच हजरत हम्जा रजिअल्लाहो अन्हो र हजरत उमर रजिअल्लाहो अन्होले इस्लाम कबूल गरे, त्यसले गर्दा काफिरहरू परास्त हुने कगार तर्फ लाग्न थाले । र यी दुवैको इस्लामले मुसलमानहरूलाई शक्ति प्रदान गऱ्यो र इस्लाम सशक्त भई हाल्यो, र मुसलमानहरू खुल्लम खुल्ला कअ्बा नजिक पहिलो पटक सामूहिक नमाज कायम गरे । यो हेरेर काफिरहरू भयभीत भए र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई इस्लामको प्रचारबाट रोक्नुको लागि आर्को विकल्पहरू तर्फ लागे । अनि उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई संसारिक लोभ लाल्सा दिनथाले, राजपाट धन सम्पत्ति सुन्दरीहरू ....आदि दिने कुराहरू पनि गरे तर उनीहरूको सबै प्रयास विफल भयो । अनि केही नबने पश्चात मुसलमानहरूको बाईकाट ( बहिष्कार) पनि गरे, र मुसलमानहरू बाईकाटको

अवधिमा भोकले रुखका पातहरू र छालाहरू खनुमा विवश र बाध्य भए । तर अल्लाहले मुसलमानहरूलाई इस्लाम माथि सुदृढ राखि यस परीक्षामा पनि सफल गऱ्यो ।

## अबू तालिब र खदीजाको निधन

नबूवतको दसौं वर्ष रजब वा रमजानको महिनामा उहाँ सल्लल्लाहो अलैहे वसल्लमको काका अबू तालिबको विरामी भएको अवस्थामा निधन भयो । र रमजान कै महीनामा नै हजरत खदीजा रजिअल्लाहो अन्हाको पनि स्वर्गबास भयो । यो घटना पनि नबूवतको दसौ वर्षमा नै घटित भयो । अनि यो दुवै घटनाले मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई व्याकुल गरिदिए, उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई अति दुःख भयो, र उहाँले हजरत खदीजाको बारेमा दुखित अवस्थामा भन्नु भयो " हजरत खदीजाले म माथि ईमान ल्याइन् जब सबैले मलाई इन्कार गरे र मलाई सत्यवान ठानिन् जब सबैले मलाई झूठो ठाने, र आफ्नो

सम्पत्तिमा मलाई भागीदार बनाइन् जब सबैले मलाई केही दिनुबाट पन्छे...... " ।

अर्थात यी दुई जनाको निधन पश्चात उहाँमाथि असहनीय अत्याचार गरियो र विभिन्न प्रकारको यातना दिइयो ।

र रमजान पछि शव्वालको महीनामा रसूल सल्लल्लाहो अलैहे वसल्लमले सौदह बिन्ते जमअहसित अनि त्यस पछि हजरत आयशासित विवाह गर्नु भयो ।

## तायफको यात्रा

जब काफिरहरूको हट र उपहास बढदै गयो, र यातनामा वृद्धि हुँदै गयो तब रसूल सल्लल्लाहो अलैहे वसल्लमले तायफको यात्रा गर्ने निर्णय गरे, यो आशाको साथ कि कदाचित तायफका बासीहरू हकलाई स्वीकार गरुन् । फेरि तायफ पुगे पछि तायफका नायकेहरूलाई इस्लामतर्फ बोलाउनु भयो, तर उनीहरूले इस्लामलाई अस्वीकृत गरेर रसूल सल्लल्लाहो अलैहे वसल्लम माथि ढुङ्गाले प्रहार गरे यहाँ सम्म कि उहाँ

सल्लल्लाहो अलैहे वसल्लमको जुत्तामा उहाँको रगत जम्यो । अनि रसूल सल्लल्लाहो अलैहे वसल्लम त्यहाँबाट निस्केर अल्लाह सित प्रार्थना गरे, अनि अल्लाहले फरिश्ताहरूलाई अवतरित गऱ्यो । फरिश्ताहरूले रसूल सल्लल्लाहो अलैहे वसल्लमसित भने हे मुहम्मद यदि तपाईको इच्छा एवं आज्ञा होस् त हामीहरू यी दुबै पर्वतहरूलाई एउटैमा मिसाई सबैलाई नाश गरिदिम् । तर उहाँले भन्नु भयो होइन बरु मलाई आशा छ कि अल्लाह यिनीहरूको सन्ततिमा यस्ता मान्छेहरूलाई जन्माउँछ जुन इस्लामलाई स्वीकार गरी एक अल्लाहमा विश्वास राख्ने छन् । अर्थात तायफमा उहाँ सल्लल्लाहो अलैहे वसल्लमलाई धेरै दु:ख भयो तर अद्दास नामक मान्छेले मक्का फर्कने समय बाटोमा इस्लाम कबूल गरेकोमा उहाँको दु:ख अलि कम भयो ।

फेरि जब तायफबाट रसूल सल्लल्लाहो अलैहे वसल्लम मक्का फर्के तब कुरैशका मान्छेहरू भन्न थाले कि यदि तपाई वास्तवमा अल्लाहको रसूल हुनुहुन्छ भने केही प्रमाण लिएर आउनुस् जसरी पहिलाका संदेष्टाहरू लिएर आए । र भने

यदि तपाई पहिलाका दूतहरू जस्तै चमत्कार ल्याउनु हुन्छ भने हामीहरू इस्लामलाई अवश्य स्वीकार्नें छौं नत्र यस्तै तिमीलाई र तिम्रा अनुयायीहरूलाई यातना दिंदैरहने छौं ।

# पहिलो चमत्कार चन्द्र च्यात्नु

जब कुरैशका काफिरहरूले हेरे कि प्रमाण र चमत्कार ल्याउन भन्दाखेरी मुहम्मद चुपलाग्नु हुन्छ त उनीहरूले विचार गरे कि हामी मुहम्मदलाई यसैको माध्यमले प्रास्त गर्नसक्छौ । अनि रसूल सल्लल्लाहो अलैहे वसल्लम निकट आई भने हे मुहम्मद के तिमीसित कुनै प्रमाण छ कि तपाई अल्लाहका सन्देशवाहक हुनुहुन्छ ? अनि त्यही बखत रसूल सल्लल्लाहो अलैहे वसल्लमले अल्लाहसित प्रार्थना गरे कि हे अल्लाह यी काफिरहरूलाई आफ्नो कुनै प्रमाण देखाऊ जसबाट यिनीहरूको शंका दूर होस् र यिनीहरूको प्रश्नको उत्तर पनि होस् । तब अल्लाहले चन्द्रलाई दुई टुक्रा पारिदियो । अनि सबै काफिरहरूले यो अनोठो र विचित्र दृश्यलाई अचम्भित भएर हेरे, तै पनि ईमान ल्याएनन् बरु भन्न थाले कि यो त मुहम्मदको खुल्लम खुल्ला जादू हो । यत्रो ठूलो चमत्कार हेरेर पनि अनास्थावानहरू अल्लाहको मायालाई बूझ्न सकेनन् , र नास्तिकहरू आफ्नो नास्तिकतामा झन् अग्रसर र उन्मादी भई मुहम्मद सल्लल्लाहो

अलैहे वसल्लमलाई जादूगरको उपाधिबाट सम्बोधित गरे ।

## दोस्रो चमत्कार इस्रा र मेअ्राज

इस्रा : मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको रातौं रात मक्का देखी बैतुल मुकद्दस सम्मको यात्रालाई इस्रा भनिन्छ ।

मेअ्राज : मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको बैतुल मुकद्दस देखी सातौ आकाशमाथि सम्मको यात्रालाई मेअ्राज भनिन्छ ।

इस्रा मेअ्राजको घटना कुन वर्ष घटित भयो यस कुरामा विद्वानहरूको मतभेद छ । कसैको कथन छ कि यो घटना नबूवतको पाँचौ वर्ष घटित भयो, त कतिको उक्ति छ कि नबूवतको दसौ वर्ष, त कसैको भनाई छ कि नबूवतको तेह्रौ वर्ष तर जसले दसौ वर्ष भनेछन् उनीहरूको कुरो नै उचित र उत्तम देखिन्छ ।

यो घटनाको तप्सील धेरै लामो छ तर संक्षेपमा यो बूझ्नुस् कि रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई एउटै रात्रीमा मक्का देखी सातौ आकाशको यात्रा गराइयो । बैतुल मुकद्दसमा उहाँ सल्लल्लाहो अलैहे वसल्लमले समस्त नबीहरूको इमामत गराउनु भयो, र सबै आकाशमा भएका नबीहरूको साथ भेंटघाट गर्दै सातौं आकाशमाथि पुग्नु भयो, र आफ्नो पालनहार अल्लाहसित आवरणको पछाडिबाट कुराकानी गर्नु भयो । र अल्लाहले यसै यात्रामा उहाँ र उहाँका अनुयायीहरू मथि पाँच बखतको नमाज अनिवार्य गऱ्यो .... आदि ।

जब रसूल सल्लल्लाहो अलैहे वसल्लमले यस घटनाको बारेमा चर्चा गर्नु भयो त नास्तिकहरूले झन् हाँसी ठट्टा गरे र उहाँको उपहास गर्दै उहाँलाई सबै भन्दा महाझूठ्ठाको नामले सम्बोधित गरे । तर जब काफिरहरूले यो घटनाबारे हजरत अबू बक्रसित भने कि तिम्रो साथी त यस्तो यस्तो कुरा गरिरहेछ । त अबू बक्रले सोधे के उहाँले वास्तवमा यस्तो भन्नु भएछ

? काफिरहरूले हाँस्दै भने हो, तिम्रो साथीले यस्तै मूर्खताको कुरा भनिरहेछ। त अबू बक्रले भने यदि मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमले यस्तो भन्नु भएछ भने यो कुरो अटल र अकाट्य सत्य हो। यसै दिन देखी हजरत अबू बक्रलाई सिद्दीक भन्न थालियो, र उहाँलाई अल्लाहले सिद्दीकको उपाधिबाट सम्मानित गऱ्यो।

अबू बक्रको यस्तो जवाफ सुनेर काफिरहरू आफ्नो मुख चिथार्न थाले, र मुहम्मद सल्लल्लाहो अलैहे वसल्लम समक्ष आई यो घटनालाई प्रमाणीकरण गर्नुको निम्ति भने हे मुहम्मद यदि तिमी आफ्नो दावीमा सत्य हौ भने हामी तिमीसित बैतुल मुकद्दसको बारेमा जे पनि सोध्ने छौं तिमी त्यसको ठीक ठीक उत्तर देऊ। काफिरहरूले यस्तो यस कारण गरे किनकी उनीहरूलाई यो थाहा थियो कि मुहम्मद त बैतुल मुकद्दस गएकै छैनन् फेरि त्यसबारे कसरी बताउन सक्छन्। तर जब उनीहरूले प्रश्न गर्न आरम्भ गरे त अल्लाहले उहाँको सामुन्ने प्रत्यक्ष बैतुल मुकद्दसलाई नै उभयायो। अनि मुहम्मद सल्लल्लाहो अलैहे

वसल्लमले उनीहरूका समस्त प्रश्नहरूको ठीक ठीक उत्तर दिनुभयो, तै पनि उनीहरू उहाँमाथि विश्वास गरेनन् बरु नास्तिकतामा नै दृढ रहे ।

## इस्लामको प्रचार अन्य कुलहरूमा

हज्जको मौसममा रसूल सल्लल्लाहो अलैहे वसल्लम बाहिरबाट आएका कुलहरू समक्ष इस्लामका निर्देशनहरू राख्दथे । र हालको वर्ष पनि अन्य बाहिरी कुलहरू समक्ष इसलामका निर्देशनहरू राखे । जुन कुलहरू समक्ष रसूल सल्लल्लाहो अलैहे वसल्लमले इस्लामीय निर्देशन राख्नु भयो ती मध्ये प्रमुख कुलहरू निम्न हुन् :

बनू आमिर बिन सअसअह, बनू महारिब बिन खसफा, बनू फुजारह, बनू गस्सान, बनू मुर्रह, बनू हनीफाँ, बनू सुलैम, बनू अबस, बनू नसर, बनूल् बुकाअ्, किन्दह र कल्ब, र बनुल हारिस बिन कअब, र अजरह एवं हजारमह... आदि ।

उपरोक्त कुलहरू मध्ये कसैले पनि त्यस बखत इस्लाम ल्याएन, तर कसैले राम्रो प्रतिक्रया ज्ञापन गरे त कसैले भने यदि हामीलाई प्रधान ( सरदार ) बनाइयोस् भने हामी इस्लाम कबूल गर्ने छौ, तर बनू हनीफाँले सबै भन्दा नराम्रो प्रतिक्रया व्यक्त गर्यो ।

## मदीनामा इस्लामको प्रकाश

नबूवतको ग्याह्रौं वर्षको हज्जमा केही मान्छेहरू मदीनाबाट हज्जगर्न आएका थिए । ती मध्ये ६ जनाले इस्लाम कबूल गरे, ती भाग्यवानहरू यी हुन् : असअद बिन जोरारह, औफ बिन हारिस, राफेअ बिन मालिक, कतबह बिन आमिर, उकबह बिन आमिर, जाबिर बिन अब्दुल्लाह ।

र नबूवतको बाह्रौं वर्षको हज्जमा १२ जना मुस्लिम भई रसूल सल्लल्लाहो अलैहे वसल्लम सित मिना नामक स्थानमा भेट्नु भयो र रसूल सल्लल्लाहो अलैहे वसल्लमको हातमा बैअत ( अटोट, प्रतिज्ञा ) गर्नु भयो, जसलाई बैअतुल्

उकबतुल् ऊला भनिन्छ । बैअत पश्चात रसूल सल्लल्लाहो अलैहे वसल्लमले मुस्अब बिन उमैरलाई यसै समूहको साथ मदीना पठाउनु भयो यो उद्देश्यको लागि कि उनीहरूलाई इस्लामीय निर्देशनहरूको पूर्ण जानकारी गराई परिपूर्ण पारुन् ।

र नबूवतको तेह्रौं वर्षको हज्जमा मदीनाबाट धेरै जना हज्जको लागि आए र रात्रीमा मिनामा भेला भएर बैअते अकबह अस्सानियह अर्थात दास्रो प्रज्ञिा गरे । र रसूल सल्लल्लाहो अलैहे वसल्लमले उनीहरूलाई थरि थरिका लाभदायक निर्देशनहरू बताए, अनि उनीहरूको लागि १२ वटा सरदार नियुक्त गरे । र यस सानो समूहले रसूल सल्लल्लाहो अलैहे वसल्लम र उहाँका साथीहरूको प्रत्येक प्रकारले सहायता गर्ने दृढ प्रतिज्ञा गरेर मदीना फर्के ।

यस घटना पश्चात मक्काका मुसलमानहरू मदीना तर्फ प्रवास गर्नथाले । मदीना तिर पहिलो प्रवास गर्ने व्यक्ति अबू सलमा अलमख्जूमी हुन् । तत पश्चात समस्त मुसलमानहरूले मदीनातिर प्रवास गरे, अबू बक्र र हजरत अली र अरु

निसहायहरू बहेक सबैले प्रवास गरिहाले । तर हजरत अबू बक्र र अलीलाई रसूल सल्लल्लाहो अलैहे वसल्लमले प्रवास गर्ने अनुमति दिएका थिएनन् त्यसै कारण उहाँहरूले पर्खी राखेका थिए ।

## रसूल सल्लल्लाहो अलैहे वसल्लमको मदीनातर्फ प्रवास

जब काफिरहरू हरेक प्रकारका प्रयासमा विफल भए त सबैले मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमलाई हत्यागर्ने षडयन्त्रमा एकमत भए र उहाँको हत्यागर्ने योजना पारित गरे ।

यस घटनाको सारांश यस्तो छ कि काफिरहरुले प्रत्येक कुलबाट एक एक नवयुवकलाई तरवार दिएर रसूल सल्लल्लाहो अलैहे वसल्लमको घरको वरिपरि बसाले, र भने कि जुन बेला पनि मुहम्मद घरबाट निस्कन्छन् सबैले एकैचोटि प्रहार गर्नु, अनि मुहम्मदको सेवा समाप्त गरिदिनु, यस्तो भनेर काफिरहरूले युवकहरूलाई त्यहाँ बसाले । तर

अल्लाहले रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई प्रकाशना ( वह्य ) द्वारा यस षडयन्त्रको खबर गरिदियो । अनि रसूल सल्लल्लाहो अलैहे वसल्लम उनीहरूको सामुन्नेबाट उनीहरूको टाउको माथि माटो हाल्दै निस्के र हजरत अबू बक्रलाई साथलिई सौर नामक गुफातर्फ लागे, तर काफिरहरू उहाँलाई हेर्न सकेनन् । अनि तीन दिन त्यसै गुफामा लुकेर बसिरहे, तत पश्चात मदीना तर्फ प्रवास गरे ।

काफिरहरू द्वारा मुहम्मदलाई खोजेर ल्याउने मान्छेलाई ठूलो पुरस्कार दिने घोषणा पनि गरियो, र उहाँलाई खोज्नुको लागि काफिरहरूले धर्ती आकाश एक पारिदिए तर जसलाई अल्लाह बचाउन चाहन्छ त्यसलाई को हानि पुर्‍याउन सक्छ । एउटा उखान छ " जाको राखे साईयां मार सके न कोय " अर्थात जसलाई अल्लाह जीवित राख्न चाहन्छ सम्पूर्ण संसार त्यसलाई कुनै हानि पुर्‍याउन सक्दैन ।

अनि रसूल सल्लल्लाहो अलैहे वसल्लम सोमवारको दिन कुबा नामक स्थानमा पुगे, अनि

त्यहाँ चार दिन बसे । तत पश्चात मदीना तर्फ प्रस्थान गरे, र मदीनामा प्रवेशगर्ने समय उहाँको भब्य स्वागत गरियो, र मदीनामा उहाँ सल्लल्लाहो अलैहे वसल्लम अबू अय्यूब अन्सारी रजिअल्लाहो अन्होको घरमा बस्ने निर्णय गरे । र जस स्थानमा उहाँको ऊँटनी बसेको थियो त्यसै स्थानमा आज मस्जिदे नबवी स्थित छ, जसमा एक नमाजको पुण्य एक हजारको बराबर छ ।

र तीन दिन पश्चात हजरत अली पनि प्रवास गरेर मदीना पुगे । तत पश्चात रसूल सल्लल्लाहो अलैहे वसल्लमले जैद बिन हारसा र अबू राफेअ्लाई मक्का पठाई आफ्नो जहान परिवारलाई पनि मदीना ल्याउने आदेश गरे ।

मदीना पुगेपछि सर्वप्रथम मस्जिदे नबवी बनाउने आदेश गरे, र नमाजको लागि अजान दिने कलेमात ( केही पंक्तिहरू जसबाट नमाजको आव्हान गरिन्छ ) एउटा सहाबीको कथन अनुसार प्रारम्भ गरियो ।

यस्तै रसूल सल्लल्लाहो अलैहे वसल्लमले प्रवासी र मदीना बासीहरू बीच ( मुवाखात ) एक आर्कालाई भाइ भाइ बनाउने नयाँ र अनोठो कार्य गर्नु भयो। प्रेम सदभावको स्वच्छ समाजको निर्माण गर्नु भयो । र मदीनामा बस्ने अनास्थावान र यहूदीहरू सित केही शर्तहरू माथि प्रतिज्ञाबद्धता ज्ञापन गर्नु भयो, यसलेगर्दा मदीना एउटा शक्तिशाली नगर भएर सर्व समक्ष सुदर्शित भयो ।

## रसूल सल्लल्लाहो अलैहे वसल्लमले गरेका केही प्रमुख युद्धहरू

रसूल सल्लल्लाहो अलैहे वसल्लमले प्रवास गरेर मदीना आए पश्चात पनि काफिरहरू चुपलागेर बसेनन् बरु मुसलमानहरूलाई कष्ट पुर्‍याउनको लागि र उनीहरूलाई सिद्धयाउनको लागि षडयन्त्र गर्दैरहे । त्यसैको परिणम स्वरूप मुसलमानहरू युद्ध गर्नुमा बाध्य भए, र अन्याय र अत्याचार अगाडि नतमस्तक नभई अन्यायलाई

मेटाउनको उद्देश्यले युद्ध गर्नथाले, त्यस मध्ये केही प्रमुख युद्धहरू निम्न हुन् ।

१ - **गजवतुल् बद्र अलकुब्रा** : बद्रको निर्णायक युद्ध ( रमजान सन् २ हिज्री )

यस युद्धमा रसूल सल्लल्लाहो अलैहे वसल्लम स्वयम् सहभागी हुनु भयो । यो युद्ध सत्य र असत्यको पहिलो निर्णायक युद्ध थियो । यस युद्धमा मुसलमानहरूको संख्या लगभग ३१३ थियो, र काफिरहरूको संख्या लगभग १००० थियो । यस युद्धमा मुसलमानहरूको विजय भयो र काफिरहरूलाई पराजय विहोर्नु पऱ्यो । र यसै युद्धमा ७० काफिरहरु मारिये र ७० नै बन्दी बनाईए ।

२ - **गजवतो उहुद** : उहुदको युद्ध ( शव्वाल ३ हिज्री )

बद्रको युद्धमा मक्काका काफिरहरूलाई पराजय विहोर्नु परेको थियो, त्यसैको प्रतिशोध लिनुको लागि काफिरहरूले मदीनामाथि आक्रमण गरे । यो युद्ध उहुद नामक पहाडको छेउमा भएको थियो । यस युद्धमा काफिरहरूको संख्या लगभग ३००० थियो, र यस युद्धमा काफिरहरू महिलाहरूलाई पनि ल्याएका थिए ताकि रणभूमिबाट पिठ्यू फर्काई नभागुन् । र मुस्लिमहरूको संख्या यस युद्धमा ७०० थियो । यस युद्धमा पहिला मुसलमानहरूको विजय भयो र काफिरहरू रणभूमि छाडेर भागे तर रसूल सल्लल्लाहो अलैहे वसल्लमको आदेशको उल्लंघन गर्नुको कारणले मुसलमानहरूको पराजय भयो । कुरो यस्तो थियो कि उहुद पहाड नजिक एउटा सानो पहाड (ढिस्को) थियो, त्यसमा सहाबाका एक समूहलाई नियुक्त गरी रसूल सल्लल्लाहो अलैहे वसल्लमले भन्नु भएको थियो कि युद्धको परिणम जे भए पनि तिमीहरू यो पहाडबाट नझरने जब सम्म कि म आदेश न दिऊँ । तर जब काफिरहरू भागी हाले त सहाबाहरूले सोचे अब त हाम्रो विजय

भइसकेको छ अब केको खतरा अनि यो सानो समूहले अल्लाहको रसूलको आदेशको उल्लंघन गर्दै पहाडबाट झरिहाले, अनि परिणम स्वरूप जीतेको युद्ध हारे । अर्थात जब पहाडमा नियुक्त सहाबीहरू मध्ये अधिकतम् सहाबीहरू तलझरे त खालिद बिन वलीदले त्यसै पहाडीको बाटो मुसलमानहरू माथि एक्कासी आक्रमण गरे अनि मुसलमानहरूको पराजय निश्चित भयो । र यसै युद्धमा रसूल सल्लल्लाहो अलैहे वसल्लमको काका हजरत हम्जह रजिअल्लाहो अन्हो शहीद भए । र अरु लगभग ७० सहाबीहरू पनि शहीद भए । र यसै युद्धमा उहाँको दाँत पनि भाँचिएको थियो ।

३ - **गजवतुल् अहजाब** : अहजाबको युद्ध ( सन् ५ हिज्री )

अहजाबको अर्थ हो समूहहरू । र यस युद्धलाई अहजाब यसै कारण भनिन्छ कि यहूदीहरूले अरबका अधिकतम् कुलहरूमा गएर मदिनामाथि आक्रमण गर्ने सुझावदिए पश्चात सबै समूहहरू मक्काका काफिरहरूसंग मिली मदीनामाथि आक्रमण गर्ने दुसहास गरे । यस युद्धमा

काफिरहरूको संख्या लगभग दश हजार १०००० थियो। ( अर्रहीकुल मख्तूम) जब यो समाचार रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई पुग्यो त उहाँले आफ्ना साथीहरू सित प्रामर्श गर्न थाले, अनि सलमान फार्सीले भने मदीनाको वरिपरि खाल्टो खोदनु नै उचित हुन्छ। अनि यो नै पारित भयो कि सलमान फार्सीको कथन अनुसार खाल्टो खोदनु नै अति उत्तम छ। अनि सबैले मिलेर खाल्टो खोदे। र जब काफिरहरू मदीनामाथि आक्रमण गर्नुको निम्ति अगाडी बढे त अवाक भए र अचम्म मान्दै भने यो के हो ? यो त हाम्रो लागि नौलो कुरो हो। अनि काफिरहरूले खाल्टोको चारैतिरबाट घेराउ गरे। तर अल्लाहको रसूलले अल्लाहसित प्रार्थनागरे पश्चात अल्लाहले उनीहरू माथि भयंकर हुरी पठाइदियो यसले गर्दा काफिरहरू आफ्नो योजनामा विफल भई अआफ्ना घरतिर फर्के। र मदीना माथिबाट यो ठूलो संकट हट्यो, र मुसलमानहरू प्रसन्न भएर अल्लाहको गुणगान गर्दै अआफ्ना घरतिर फर्के।

४ - **गजवतो बनी कुरैजह** : बनू कुरैजहको युद्ध ( जिलकअद: ५ हिज्री )

जस दिन रसूल सल्लल्लाहो अलैहे वसल्लम अहजाबको युद्धबाट फर्केर आए त्यसै दिन हजरत जिब्रीलले आएर यो आदेश सुनाउनु भयो कि बनू कुरैजह गोत्रमाथि आक्रमण गर्नुस् । यो सुन्न साथ रसूल सल्लल्लाहो अलैहे वसल्लमले सबै सहाबीहरूलाई एउटा सचेतक द्वारा यस आदेशको सूचना पठाई दिनु भयो । र यो भन्नु भयो कि सबैजना अस्रको नमाज बनू कुरैजहमा नै पढुन् । अनि बनू कुरैजहको घेराउ गरियो, र केही दनिको घेराउ पश्चात बनू कुरैजहका मानिसहरुले आत्मसमर्पण गरे र मुसलमानहरूको विजय भयो ।

**५ - गजवतो बनील् मुस्तलिक वा अल् मुरीसीअ्** : ( सन् ५ वा सन् ६ हिज्री )

मरीसीअ् एउटा पानी भएको ठाउँको नाम हो, र बनू मुस्तलिक एउटा कुलको नाम हो । बनू मुस्तलिक त्यो पानी भएको टाउँमा बसोबास गरेका थिए, र यिनीहरू मक्काका काफिरहरूसंग मिलेर

मदीनामाथि आक्रमण गर्ने विचारमा थिए । तर रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई यसको खबर पुग्यो अनि उहाँले यस सूचनाको प्रमाणीकरण गर्नुको लगि बुरैदह नामक सहाबीलाई पठाए । खबर साँचो हो यो सूचना मिले बित्तिकै रसूल सल्लल्लाहो अलैहे वसल्लमले उनीहरूलाई यस षडयन्त्रको दण्ड दिनुको लागि बनू मस्तलिक कुलका मान्छेहरू एकत्रित भएको ठाउँ मुरीसीअ् नामक स्थानमा पुगे । अनि युद्धको परिणाम मुसलमानहरूको हकमा भयो रसूल सल्लल्लाहो अलैहे वसल्लम विजयी भएर मदीना फर्के ।

यस युद्धमा एउटा ठूलो घटना घटित भयो जसले रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई व्याकुल गरिदियो । कुरो यो थियो कि यस युद्धबाट फर्कदाखेरी बाटोमा बासबसेको समय हजरत आयशाको हार हरायो अनि त्यसैलाई खोज्नुको कारण हजरत आयशा रजिअल्लाहो अन्हा पछाडी छुटिन । अनि एउटा सहाबी सफवानले उहाँलाई हेरे पश्चात मदीना ल्याए । तर कपटिहरूलाई रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई दु:ख पुऱ्याउनको

लागि एउटा राम्रो अवसर प्राप्त भयो, अनि उनीहरूले हजरत आशाको सतित्वमाथि दोषारोपण गरे । तर अल्लाहले उहाँ रजिअल्लाहो अन्हाका सतित्वलाई प्रमाणित गर्नुको लागि सातौं आकाशबाट आयहरू अवतरित गऱ्यो । तत पश्चा दोषारोपण गर्नेहरूलाई कोर्रा लगाई दण्डित गरियो ।

**६ - गजवतो खैबर** : खैबरको युद्ध (सन् ६ हिज्री)

खैबर एउटा नगरको नाम हो, जसमा यहूदीहरू बसोबास गर्थे । र यिनीहरू नै काफिरहरूलाई मुसलमानहरू विरुद्ध आक्रमण गर्नुमाथि उत्तेजित गर्थे । यसै कारण उनीहरूलाई पाठ पढाउनु अनिवार्य भइसकेको थियो । तसर्थ रसूल सल्लल्लाहो अलैहे वसल्लमले सोही उद्देश्यले १४०० सहाबाहरूलाई साथ लिई खैबरतिर प्रस्थान गर्नु भयो । त्यहाँ पुगे पश्चात खैबरको किल्लाको घेराउ गर्नु भयो । र खैबर नगरका समस्त किल्लाहरूको संख्या ७ थियो । ( अर्रहीकुल् मख्तूम ) तर यो सबै किल्लाहरू पनि मुसलमानहरूको

विजयमा बाधा पुऱ्याउन सकेनन् बरु विजय एकेश्वरवादीहरूको नै भयो, र यहूदीहरू पराजित भए । र यस युद्धमा ९३ यहुदीहरू मारिए , र अरु बन्दी बनाइए । ती बन्दी मध्ये नै सफीयह बिन्ते हुईइ थिइन् जससित रसूल सल्लल्लाहो अलैहे वसल्लमले विवाह गर्नु भयो र उहाँको स्वन्त्रालाई उहाँको मुहर तोक्नु भयो ।

र यसै युद्धमा नै रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई एउटी यहूदी महिलाद्वारा बाख्राको मासुमा विष दिईयो, तर अल्लाहको कृपाले उहाँ त बाँच्नु भयो तर उहाँको एउटा साथी बिशर बिन बराअ् बिन मअरुर नामक सहाबीको मृत्यु भयो । अनि त्यो महिलालाई त्यस सहाबीको बदलामा मारियो ।

**७ - मअ्रकतो मूता** : मूताको युद्ध ( जमादिल् ऊला सन् ८ हिज्री )

वर्ष ६ हिज्रीको अन्तमा रसूल सल्लल्लाहो अलैहे वसल्लमले विभिन्न राजाहरू तर्फ पत्र

पठाउनु भएको थियो, जस पत्रद्वारा उनी सबैलाई इस्लामको शान्तितर्फ निम्तो दिनु भएको थियो । रसूल सल्लल्लाहो अलैहे वसल्लमले पत्र पठाएका केही राजा एवं सरदारहरूको नाम निम्न हुन् :

१ - अन्नजाशी असहमह बिन अल् अब्जर हब्शाको राजा ।

२ - मुकौकिस मिश्रको राजा ।

३ - किसरा अबरवेज फारसको राजा ।

४ - कैसर हेरक्ल रोमको राजा ।

५ - मुंजिर बहरैनको हाकिम ।

६ - हौजह यमामाको हाकिम ।

७ - हारिस बिन अबी शमर अल गस्सानी दमश्कको हाकिम ।

८ - ओमानको राजा .... आदि ।

**युद्धको कारण !**

रसूल सल्लल्लाहो अलैहे वसल्लमले जुन पत्रहरू आफ्ना दूतहरू द्वारा पठाएका थिए ती मध्ये एउटा दूतको हत्या गरिएको थियो जस दूतको नाम हारिस बिन उमैर थियो । र जस हाकिमले उहाँको हत्या गरेको थियो त्यसको नाम शरहबील बिन अमर अल गस्सानी थियो । जब यस घटनाको खबर रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई पुग्यो त रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई धेरै दुःख भयो, अनि त्यस अभिमानीलाई पाठ पढाउनको लागि रसूल सल्लल्लाहो अलैहे वसल्लमले एउटा सेनाको ठूलो टोली त्यार पार्नु भयो, जसको संख्या ३००० थियो । र जैद बिन हारसालाई सेना कमान्डर नियुक्त गर्नु भयो, र भन्नु भयो यदि जैद शहीद हुन्छन् भने जअ्फरलाई कमान्डर बनाउनु, यदि उहाँको पनि शहादत हुन्छ भने अब्दुल्लाह बिन रवाहालाई कमान्डर बनाउनु ..........। अर्थात उनीहरूलाई केही महत्वपूर्ण निर्देशनहरू दिई रणभूमि तर्फ पठाउनु भयो ती निर्देशनहरू मध्ये केही निम्न हुन :

अल्लाहको नामबाट र उसको कृपा पाउनुको लागि अल्लाहलाई नमान्नेहरू सित युद्ध गर्नु , विश्वासघात नगर्नु , बेईमानी नगर्नु , बच्चा बुढो महिला र पूजा स्थलमा बसेर पूजा गर्ने व्यक्तिहरूलाई नमार्नु , रुखहरूलाई नकाट्नु , धन सम्पत्तिलाई नष्ट नगर्नु , र घरहरूलाई न भत्काउनु .....आदि ।

र यो युद्ध पहिलाको युद्धहरुबाट भिन्न थियो किनकी यस युद्धमा विरोधीहरूको संख्या दुई लाख २०००00 थियो र मुसलमानहरू केवल तीन हजार ३००० । दुवै पक्षको सेनालाई हेर्दा आश्चर्य लाग्दो कुरो थियो । तर जब युद्धको आरम्भ भयो त इतिहास साक्षी छ कि मुसलमानहरू यस्तो वीरताले आफ्नो शत्रुसित युद्धगरे कि शत्रुहरूको सेनालाई भयभीत गरिदिए । अनि दुवै सेना बीच भीषण युद्ध भयो, र दुवै समूहलाई क्षति पुग्यो, तर हजरत खालिद बिन वलीदको युद्धशैली र चतुराईले गर्दा मुसलमानहरू काफिरहरू माथि प्रभावी रहे । र यो युद्ध बिना कुनै परिणाम समाप्त भयो ।

**८ - फतहे मक्का** : मक्का माथि विजय (रमजान सन् ८ हिज्री)

रमजान सन् आठ हिज्रीमा मुसलमानहरूलाई मक्कामाथि विजय प्राप्त भयो, र यो मुसलमानहरूको सबै भन्दा ठूलो विजय थियो । यो विजय अल्लाहले आफ्नो भक्तहरूलाई उपहारको रूपमा दियो । यस युद्धमा मुसलमानहरूको संख्या लगभग दश हजार थियो । यत्रो संख्या हेरेर शत्रुहरू भयभीत भए । यस युद्धमा फाटफुट झिडप बाहेक कुनै युद्ध भएन । र मक्कामाथि मुसलमानहरूलाई विजय प्रप्त भयो । अनि रसूल सल्लल्लाहो अलैहे वसल्लमले कअ्बालाई मूर्तिहरूबाट पवित्र गरे र हजरत बिलाल कअ्बामाथि चढ्ेर अजान भन्नु भयो । अनि सबैले अल्लाहको कृतज्ञता प्रकट गर्दै र गुणगान गर्दै मस्जिदे हराममा नमाज कायम गरे , र असत्य र बहुदेववाद परास्त भयो ।

**९ - गजवतो हुनैन** : हुनैनको युद्ध ( शव्वाल सन् ८ हिज्री )

यस युद्धमा मुसलमानहरूको संख्या १२००० थियो । र मुसलमानहरूमा धेरै जसो मान्छेहरू नयाँ मुसलमानहरू थिए, अनि कतिपयले त अभिमान गर्दै भन्न थाले हाम्रो यत्रो ठूलो सेनालाई को पराजित गर्नसक्छ ? हामी त अवश्य विजयी हुनेछौं । यस्तो अभिमानी कुरा सुनेर रसूल सल्लल्लाहो अलैहे वसल्लम धेरै दुःखी भए, र यसै अभिमानको कारण युद्ध प्रारम्भ हुने बित्तिकै मुसलमानहरूलाई पराजय बिहोर्नु पर्‍यो । तर रसूल सल्लल्लाहो अलैहे वसल्लमले अल्लाअसित दुआ गरे र सबैलाई एकजुट पारेर फेरि आक्रमण गरे, अनि मुसलमानहरूको विजय भयो र शत्रुहरू सबै माल सामान छाडेर भागे । अनि शत्रुहरू भागेर तीन ठाउँमा एकत्रित भए तर मुसलमानहरूले सबै ठाउँमा आक्रमण गरी सबै शत्रुहरूलाई पराजित गरे । र मुसलमानहरू शत्रुहरूलाई लखेट्दै तायफ सम्म पनि पुगेका थिए र त्यहाँ पनि युद्ध भएको थियो जसलाई गजवतु त्तायफको नामले याद गरिन्छ ।

र यसै उद्ध पश्चात रसूल सल्लल्लाहो अलैहे वसल्लमले जेईराना नामक स्थानबाट जुन कि मक्काबाट अति नजिक छ उमरा गर्नु भयो ।

**१० - गजवतो तबूक** : तबूकको युद्ध ( रजब सन् ९ हिज्री )

मूताको युद्धमा मुसलमानहरू रोमीहरू मथि प्रभावी रहेका थिए त्यसैको प्रतिशोध लिनुको निम्ति रोमीहरूले ठूलो सेना एकत्रित गरे, र एउटा निर्णायक युद्धको योजना बनाए । जब रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई यसको खबर मिल्यो त रसूल सल्लल्लाहो अलैहे वसल्लमले सबैलाई यस युद्धको त्यारीको आदेश दिए। यस युद्धमा मुसलमान सेनाको संख्या ३०००० थियो । तर जब मुसलमानहरू तबूक नामक स्थानमा पुगी शत्रुको प्रतिक्षा गर्दै बसीरहे त शत्रुहरू मुसलमानहरूको यो सहास हेरी भयभीत भए र युद्धको लागि आएनन् ।

यो युद्ध नै रसूल सल्लल्लाहो अलैहे वसल्लमको अन्तिम युद्ध थियो, र यस युद्धपछि

मान्छेहरू समूह दर समूह इस्लामलाई कबूल गरे, र इस्लामको प्रकाश समस्त अरब महाद्वीपमा फैलियो ।

# रसूल सल्लल्लाहो अलैहे वसल्लमको हज्ज ( हज्जतुल वदाअ् )

रसूल सल्लल्लाहो अलैहे वसल्लमले ४ उमरा र मात्र एक हज्ज गर्नु भयो । जसलाई हज्जतुल् वदाअ्को नामबाट याद गरिन्छ । यस हज्जमा उहाँ सल्लल्लाहो अलैहे वसल्लमको साथमा लगभग एक लाख मुसलमानहरूले हज्ज गरे, र यसै हज्जको सुअवसरमा उहाँले एउटा यस्तो वक्तव्य दिनुभयो जसले त्यस बखतको सूपरपावर कैसर र किसराको सामराजको जगलाई पनि हल्लाई दियो, र त्यो वक्तव्य आउनेवालाहरूको लागि आदर्श भयो ।

# रसूल सल्लल्लाहो अलैहे वसल्लमको स्वर्गबास

हज्जको अवसरमा जब अल्लाहले कुरआनको यो आयत “ अलयौमा अक्मलतो लकुम दीनकुम........” अवतरित गऱ्यो त्यसै बखत सहाबाहरूलाई यो थाहा भइहाल्यो कि अब बिछोडको समय आई पुगेछ, र उहाँ सल्लल्लाहो अलैहे वसल्लमको कार्यकाल यस संसारमा समाप्त हुनेवाला छ ।

अनि जब उहाँ सल्लल्लाहो अलैहे वसल्लम हज्जबाट फर्केर मदीना आए त सोमवारको दिन अरबीको सफर महीनामा सन् ११ हिज्रीको दिन उहाँ बकीअ् नामक कब्रस्तानमा एउटा जनाजामा सहभागी भएर घर फर्क्दाखेरी उहाँको टाउकोमा पीडा उत्पन्न भयो, र पीडा बढ्दै गयो । अनि उहाँले हजरत अबू बक्रलाई नमाज पढाउने आदेश गरे । र जस दिन उहाँको स्वर्गबास भयो त्यस दिन उहाँले आफ्नी प्रिय छोरी फातिमालाई जन्नतकी

सबै महिलाहरूकी सरदारनी हुने शुभ समाचार एवं वरदान दिए । र सोमवारको दिन अल्लाहुम्मा अर्रफीकुल् अअ्ला भन्दै परलोक सुधार्नु भयो । ( इन्ना लिल्लाहे वइन्ना इलैहे राजेऊन ) अनि जब उहाँको देहान्तको समाचार हजरत उमरलाई पुग्यो त उहाँ यति शोकचकित भए कि तरवार लिएर भन्न थाले जसले यो भन्छ कि मुहम्मदको मृत्यु भयो त्यसको गर्दन यस तरवारले छिनाली हाल्छु , अनि हजरत अबू बक्रले कुरआनको एउटा आयत पढी उहाँलाई शान्त गर्नु भयो । अनि मंगलवारको दिन उहाँ सल्लल्लाहो अलैहे वसल्लमको कफन दफन भयो ।

# रसूल सल्लल्लाहो अलैहे वसल्लमकी स्वास्नीहरू

२ - हजरत सौदह बिन्ते जमअह रजिअल्लाहो अन्हा ।

३ - हजरत आइशा सिद्दीकह रजिअल्लाहो अन्हा ।

४ - हजरत हफसा बिन्ते उमर रजिअल्लाहो अन्हा ।

५ - हजरत जैनब बिन्ते खुजैमह रजिअल्लाहो अन्हा ।

६ - हजरत उम्मे सलमा बिन्ते अबी उमैया रजिअल्लाहो अन्हा

७ - हजरत जैनब बिन्ते जहश रजिअल्लाहो अन्हा ।

८ - हजर जुवैरीया बिन्ते हारिस रजिअल्लाहो अन्हा ।

९ - हजरत उम्मे हबीबा रमला बिन्ते अबी सुफियान रजिअल्लाहो अन्हा ।

१० - हजरत सफीया बिन्ते हुईइ बिन अख्तब रजिअल्लाहो अन्हा ।

११ - हजरत मैमूना बिन्तुल् हारिस रजिअल्लाहो अन्हा ।

## रसूल सल्लल्लाहो अलैहे वसल्लमका संतानहरू

१ - कासिम, जेठो छोरा ।

२ - जैनब, जेठी छोरी ।

३ - रुकैया, छोरी ।

४ - उम्मे कुलसूम छोरी ।

५ - फातिमा सानी (कान्छी) छोरी ।

६ - अब्दुल्लाह, हजरत खदीजाबाट रसूल सल्लल्लाहो अलैहे वसल्लमको अन्तिम संतान ।

७ - इब्राहीम, हजरत मारियाको कोखबाट मदीनामा जन्मे (हजरत मारियालाई मिश्रको राजाले रसूल सल्लल्लाहो अलैहे वसल्लमलाई उपहारको रूपमा अर्पण गरेका थिए ) ।

नोट :- रसूल सल्लल्लाहो अलैहे वसल्लमका सबै छोराहरूको बाल्यकालमा नै स्वर्गबास भइसकेको थियो । मात्र छोरीहरू नै इस्लाममलाई पाइन् र इस्लाममलाई अङ्गिकार गरिन् । उहाँको सात संतान मध्ये तीन छोरा र चार छोरीहरू थिए । इब्राहीमलाई छाडी सबै हजरत खदीजाको कोखबाट जन्मे ।

# रसूल सल्लल्लाहो अलैहे वसल्लमका केही विशेषताहरू

रसूल सल्लल्लाहो अलैहे वसल्लमको अनुहार चन्द्र जस्तो प्रकाशमय थियो, र उहाँको अनुहारमाथि पसीना मोती झै लाग्थ्यो । र उहाँको पुर्ण शरीरको आकार सर्वोत्तम थियो, र उहाँको टाउको ठूलो र कपाल लामो थियो । र उहाँको शरीर र हात रेशम भन्दा अधिक कोमल थियो । र उहाँको पसीना मिस्क भन्दा अधिक सुगंधित थियो । उहाँ मीठो र कोमल स्वरमा कुरा गर्थे, र हंसमुख थिए । अभिमान र क्रोधबाट टाढा रहन्थे, सबै माथि दयावान थिए, सत्य बोलथे र सत्यवानलाई मनपराउँथे । झूठबाट टाढा रहन्थे र झूठाबाट घृणा गर्थे । निर्लज्जतालाई मापराउँदैन्थे र गाली गलूजबाट क्रोधित हुन्थे । नि:सहायलाई सहारा दिन्थे, र ऋणीको ऋण चुक्ता गर्थे सबैसित सुव्यवहार गर्थे.......आदि ।

रसूल सल्लल्लाहो अलैहे वसल्लमको बखान त कदापि गर्न सकिन्न र यस्ता शब्द नै छैनन् जसद्वारा उहाँको बखान गरियोस् ।

यो संक्षिप्त ज्ञान मुहम्मद सल्लल्लाहो अलैहे वसल्लमको जीवनको बारेमा हो । यो लेख लेखने अर्थ यो होइन कि यो उहाँ सल्लल्लाहो अलैहे वसल्लमको जीवनबारे पूर्ण ज्ञान हो, जस्तो कि म पहिला नै वर्णन गरी सकेछु । मैले लेखेको जानकारी उस्तै हो जस्तो कि समुद्रबाट एक थोपा पानी । तसर्थ अधिक जानकारीको लागि उहाँको जीवनी माथि लेखिएका लेखहरूलाई अवश्य अध्यन गर्नुहोस् ।

अन्तमा अल्लाह सित प्रार्थना छ कि अल्लाह हामीलाई रसूल सल्लल्लाहो अलैहे वसल्लमको पद्धतिमा चलने शक्ति प्रदान गरुन्, र जीवनका हरेक क्षेत्रमा उहाँलाई नै आदर्श बनाई जीवन व्यतीत गर्ने भक्ति प्रदान गरुन् । र हामीलाई उहाँको सत्य उम्मती बनाई उहाँको सिफारिशको सुअवसर प्रदान गरुन्, र हाम्रा माल सम्पत्ति र संतानमा वृद्धि गरुन् , र हाम्रा नि:संतान दाजुभाइ र

दिदिबहिनीहरूलाई संतान प्रदान गरी उहाँहरूको मुटुलाई शितल पारुन् , र जेजति हामीले अज्ञानताले पापहरू गरेका छौं त्यसलाई क्षमा गरी हाम्रा पापहरूलाई पुण्यमा परेणित गरी स्वर्ग प्रदान गरुन् । (आमीन)

## *समाप्त*

***लेखक***

**अतीकुर्रहमान मोहम्मद इदरीस खान मक्की**

**कपिलवस्तु नगर पालिका वॉड नं.९**
**महुवा तौलिहवा कपिलवस्तु**
**नेपाल**

Mob. No.00977-9847030780
00966-0501372254